

# नेपाल राजपत्र

नेपाल सरकारद्वारा प्रकाशित

खण्ड ६३) काठमाडौं फागुन १२ गते, २०७० साल (संख्या ४५

## भाग ५

### नेपाल सरकार

### गृह मन्त्रालयको सूचना

नेपाल सरकारले २०७१ साल वैशाख १ गतेदेखि २०७१ सालचैत्र मसान्तसम्म एक वर्ष भरिमा सबै सरकारी कार्यालयहरूलाई देहाय बमोजिमको सार्वजनिक, पर्व एवं सट्टा विदा र कार्यालय समय निर्धारण गर्ने निर्णय गरेको छ ।

**१. वर्षभरिका शनिवार विदा :**

| | | | |
|---|---|---|---|
| (क) | वैशाख - ६,१३,२०,२७ (४ दिन) | (ख) | जेठ-३,१०,१७,२४,३१ (५ दिन) |
| (ग) | असार-७,१४,२१,२८ (४ दिन) | (घ) | साउन-३,१०,१७,२४,३१ (५ दिन) |
| (ङ) | भदौ - ७,१४,२१,२८ (४ दिन) | (च) | आश्विन-४,११,१८,२५ (४ दिन) |





| | | | |
|---|---|---|---|
| (छ) | कात्तिक-१,८,१५,२२,२९ (५ दिन) | (ज) | मङ्सिर-६,१३,२०,२७ (४ दिन) |
| (झ) | पौष-५,१२,१९,२६ (४ दिन) | (ञ) | माघ-३,१०,१७,२४ (४ दिन) |
| (ट) | फाल्गुन-२,९,१६,२३,३० (५ दिन) | (ठ) | चैत्र-७,१४,२१,२८ (४ दिन) |

जम्मा : ५२ दिन

**२. पर्व विदाहरु :**

(क) नववर्ष, वैशाख १ गते सोमवार ।

(ख) किराँत राई लिम्बू जातिको उभौली पर्व - चण्डी पूर्णिमा (वैशाख पूर्णिमा), बैशाख ३१ गते बुधवार ।

(ग) जनै पूर्णिमा, रक्षाबन्धन (ऋषि तर्पणी) साउन २५ गते आइतवार ।

(घ) गौरापर्व भदौ १७ गते मंगलवार ।

(ङ) इस्लाम धर्मावलम्वीहरूको पर्व ईद (इदुल्ल फित्र) का दिन ।

(च) छठ पर्व कात्तिक १२ गते बुधवार ।

(छ) इस्लाम धर्मावलम्वीहरूको पर्व बकर ईद (इदुल जोहा) का दिन ।

(ज) किराँत जातिको उधौली पर्व, योमरी पुन्हि-ज्यापु दिवस (मङ्सिर पूर्णिमा,धान्य पूर्णिमा) मङ्सिर २० गते शनिवार ।

(झ) इसाई धर्मावलम्वीहरूको पर्व क्रिसमस डे, (डिसेम्बर २५ तारिख) पौष १० गते बिहीवार ।

(ञ) तमूल्होसार पौष १५ गते मंगलवार ।

(ट) माघी पर्व एवं छन्त्याल जातिको राष्ट्रिय पर्व माघ १ गते बिहीवार ।

(ठ) सोनमल्होसार माघ ७ गते बुधवार ।

(ड) महाशिवरात्री, फाल्गुन ५ गते मंगलवार ।

(ढ) हिमाली आदिवासी शेर्पाहरूले मनाउने घ्याल्पोलोसार फाल्गुन ७ गते बिहीवार ।

(ण) अन्तर्राष्ट्रिय महिला दिवस, (मार्च ८) फाल्गुन २४ गते आइतवार ।

(त) फागुपूर्णिमा, फाल्गुन २१ गते बिहीवार र देहायका जिल्लाहरूमा फाल्गुन २२ गते शुक्रवार ।

जिल्लाहरूको नाम

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| १. | झापा | ६. | उदयपुर | ११. | बारा | १६. | दाङ |
| २. | मोरङ्ग | ७. | धनुषा | १२. | पर्सा | १७. | बाँके |
| ३. | सुनसरी | ८. | महोत्तरी | १३. | नवलपरासी | १८. | बर्दिया |
| ४. | सप्तरी | ९. | सर्लाही | १४. | रुपन्देही | १९. | कैलाली |
| ५ | सिरहा | १०. | रौतहट | १५. | कपिलवस्तु | २०. | कञ्चनपुर |

(थ) सिरुवा पावनी पर्वका दिन त्यस्तो पर्व मनाउने झापा, मोरङ्ग, सुनसरी, सिराहा र सप्तरी जिल्लामा ।

(द) धवथाम्वु छेउचिक पर्वका दिन त्यस्तो पर्व मनाउने जिल्लाहरूमा स्थानीय विदा ।

**३. महिला कर्मचारीहरूको लागि मात्र :**

(क) हरितालिका (तीज), भदौ १२ गते बिहीवार ।

(ख) ऋषि पञ्चमी, भदौ १४ गते शनिवार ।

(ग) जितिया पर्व भदौ ३१ गते मंगलवार (जितिया पर्व मनाउने महिला कर्मचारीहरूको लागि) ।

**४. शिक्षण संस्थाहरूको लागि मात्र :**

(क) वसन्त पञ्चमी, माघ ११ गते आइतवार ।

**५. जात्रा विदा (काठमाडौं उपत्यकालाई मात्र) :**

(क) गाईजात्रा, साउन २६ गते सोमवार ।

(ख) इन्द्रजात्रा, भदौ २३ गते सोमवार ।





(ग) मत्स्येन्द्रनाथको भोटो देखाउने जात्रा (सो जात्रा हुने दिन )

(घ) घोडेजात्रा चैत्र ६ गते शुक्रवार ।

**६. दशैं विदा :**

(क) घटस्थापना, आश्विन ९ गते बिहीवार ।

(ख) आश्विन १५ गते बुधवारदेखि आश्विन १९ गते आइतवारसम्म (फूलपातीदेखि द्वादशीसम्म) ।

(ग) कोजाग्रत पूर्णिमा, आश्विन २१ गते मंगलवार ।

**७. तिहार विदा :**

(क) लक्ष्मीपूजा, कात्तिक ६ गते बिहीवार ।

(ख) गोवर्धन पूजा, म्ह पूजा, नेपाल सम्वत् कात्तिक ७ गते शुक्रवार ।

(ग) भाइटीका, कात्तिक ८ गते शनिवार ।

**८. दिवस विदा :**

(क) लोकतन्त्र दिवस, बैशाख ११ गते बिहीवार ।

(ख) विश्व मजदुर दिवस, (मे १) बैशाख १८ गते बिहीवार ।

(ग) गणतन्त्र दिवस, जेठ १५ गते बिहीवार ।

(घ) निजामती सेवा दिवस, भदौ २२ गते आइतवार (विदेशस्थित नेपाली नियोगहरूमा कार्यरत समेत निजामती कर्मचारी, अदालत तथा संवैधानिक निकायका कर्मचारीहरूलाई मात्र )

(ङ) अन्तर्राष्ट्रिय अपाङ्ग दिवस, (डिसेम्वर ३) मङ्सिर १७ गते बुधवार (नेपाल भित्रका सम्पूर्ण अपाङ्ग कर्मचारीहरूको लागि) ।

(च) शहीद दिवस, माघ १६ गते शुक्रवार ।

(छ) राष्ट्रिय प्रजातन्त्र दिवस, फाल्गुन७ गते बिहीवार ।

**९. जन्म जयन्ती विदा :**

(क) बुद्ध जयन्ती, बैशाख ३१ गते बुधवार ।

(ख) श्रीकृष्ण जन्माष्टमी, भदौ १ गते आइतवार ।

(ग) गुरु नानक जयन्ती कात्तिक २० गते बिहीवार (नेपाली सिख धर्मावलम्बी सरकारी कर्मचारीहरूका लागि) ।

(घ) रामनवमी (राम जयन्ती), चैत्र १४ गते शनिवार ।

(ङ) महावीर जयन्ती, चैत्र १९ गते बिहीवार (नेपाली जैन धर्मावलम्बी सरकारी कर्मचारीहरुका लागि) ।

**१०. विदेश स्थित नेपाली नियोगहरूले सम्बन्धित मुलुकका सार्वजनिक विदाहरूलाई समेत दृष्टिगत गरी बढीमा १८ दिनसम्म सार्वजनिक विदा आफैंले व्यवस्थापन र समायोजन गर्न सक्ने ।**

**११. <u>सट्टा विदा :</u>**

अस्पताल, रोपवे, टेलिफोन, प्रहरी, अध्यागमन, थाना, चौकी, फायर ब्रिगेड, टक्सार, रेडियो नेपाल, नेपाल टेलिभिजन, नेपाल सरकार मुद्रण विभाग, हुलाक, आकाशवाणी आदि जस्ता रोजना र आकस्मिक सेवा प्रदान गर्ने मन्त्रालय, विभाग तथा कार्यालयहरूले सार्वजनिक विदाका दिनमा समेत काम काज गर्नु पर्ने हुँदा त्यस्ता कार्यालयहरूमा दैनिक काम नरोकिने गरी सार्वजनिक विदाका दिन काम गरेवापत प्रचलित कानूनको रीत पुऱ्याई सट्टा विदा वस्न पाइने ।

**१२. <u>कार्यालय हाजिर हुने र छुट्ने समय :</u>**

(क) नेपाल राज्यभरका सबै सरकारी कार्यालयहरूमा शुक्रवार बाहेक माघ १६ गतेदेखि कात्तिक १५ गतेसम्म विहान १०:०० बजे हाजिर भई अपरान्ह ५:०० बजे छुट्ने र कात्तिक १६ गतेदेखि माघ १५ गतेसम्म विहान १०:०० बजे हाजिर भई अपरान्ह ४:०० बजे छुट्ने ।





(ख) शुक्रवारको दिन विहान १०:०० बजे हाजिर भई अपरान्ह ३:०० बजे छुट्ने ।

**<u>द्रष्टव्य</u> :**

(क) "आधा दिन" भन्नाले कात्तिक १६ गतेदेखि माघ १५ गतेसम्म तीन महिनाको लागि दिनको १:०० वजे र माघ १६ गतेदेखि कात्तिक १५ गतेसम्म दिनको १.३० वजेसम्म सम्झनु पर्छ ।

(ख) सेवाग्राहीलाई प्रदान गरिने सेवा प्रवाहमा असर नपर्ने गरी कार्यालय समयको १ बजेदेखि २ वजेसम्म खाजा खाने समय कायम गरिएको छ ।

आज्ञाले,

**जनार्दन नेपाल**

नेपाल सरकारको सचिव

मुद्रण विभाग, सिंहदरबार, काठमाडौंमा मुद्रित/ मूल्य रु. ५/-
गो.हु.द.नं. १६ /०६२/०६३